१८८३ सालको

## श्री ५ राजेन्द्रको न्यायिक बन्दोवस्त

आगे दलभंजन पाँडे के तैंले दरवारमा वसी अदातली काज चलाउँदा गर्न्या कामको सवाल गरी वक्स्यौं पातिज्र्मासित यस काजमा. तनमन लगाई मोलाहिजा कसैको नराषि लोभ मोहमा नपसी जस्ताको तस्तो निसाप पारी छिंनु ---------------------------------

### प्रथम सवाल

॥ हाम्रा भर मुलुकका श्रीगुरु प्रोहित चौतारा काजी सर्दार सुब्बा अदालत दफतरषानाका श्रीकुमारीचोक सुवेदार ज्मादार अमाली इजारादार रकमी. सिपाही गैरहले थिचो मिचो गरि अन्या गऱ्या निसाफ पायुँन भनी कराउन आउन्या चार वर्ण छतिसै जात छोडा वडा गरीव गुरुवा जो फिऱ्याद गर्न आउँछन् जसको नाउँमा फिराद गर्न आउँछन् तसलाई झिकि तनको कुरो जस्तोको तस्तो निसाफ पारि छिंनु आफूले आट्नु नसक्याको कुरा हाम्रा हजूरमा विन्ति गरि हुकुम वक्स्या बमोजिम गर्नु ------------------ ।

### दोस्रा सवाल

॥ फिऱ्यादीका दोहोरो कुरा सुनी आफ्ना चित्तले ठहराउन नसक्याका कुरामा श्री जनरलसित बसी ठहराइ सो कुरा हाम्रा हजुरमा विंति पारी हुकुम बक्स्या बमोजिम गर्नु --------------

## तेस्रा सवाल

॥ फिऱ्यादीका कुरा सुनी निसाफ गर्दा छोडा वडा जसको बेजाजिले फेराद आयाको छ तसलाई झिकि पुर्पछे सुनी ज्याकुरो विजाजि गऱ्याको ठहर्छ सोकुरा दिलाइदिनु तेरा भन्दा नमानी धेगाई गर्न्यालाइ हाम्रा हजुरमा विंति पारी हुकुम वक्स्या बमोजिम गर्नु --------------

## चौथा सवाल

॥ अंत अधार केहि नहुन्या दर्वारैबाट वस्क्याको जगा दर्व्यले मात्र वाचन्या बक्स्याको जगा दर्व्य व्यहोरन नपाइ षाना लाउन्या विनु मन लागन्याको कुरा हाम्रा हजुरमा विंति पारि मुनासिव माफिक हामीले वंस्क्याको वेहोराई गर्नु ----------------------

## पाँचौ सवाल

॥ चारै षुटका गरीव गुरुवा फकीडफकडा राहदानी (री) नपाई अट्केर कराऩ्याहरूको कुरा सुनी उसवाट कौनै कुराको विगार नठहर्न्या देष्या जौनादिसा जान्या भंछ तसतसैदिसा को राहदानी (री) गर्न्या भारादार छेउ पठाई राहदानी गरी पठाई दिनु -----------------------

## छैटौं सवाल

॥फिऱ्या आउन्या र छिवरो भाग जो छयलिरहेछ अघि निका मानिसको नालीस गरी पुर्पछे गर्दा पोल्हा ठहऱ्यो भन्या सो कुरा हाम्रा हजूरमा जाहेर गरी ममोनासिब माफिकको सासना हाम्रा हुकुम बमोजिम गर्नु -----------

## सातौ सवाल

॥ फिऱ्यादुका कुरा सुंदा विडि हाल्या भन्या विडी कर्पन समाती पानी कराहि नपुगी छिन्या रहेछ भन्या झगरियाको कायलनामा ली चारदाम रुष्याइ डंड जितावरी गरी छिंनु झगरियाले भाकनु भकाभकाउनामा राजी छौं भन्या भकाइ दीनु पानी कराही नदीइ झगरा छिंन्या रहेनछ भन्या आफ्ना मानिस साथ अदालत् पुऱ्याइदीनु ------------------------------

## आठौं सवाल

॥ सर्वस्व हुन्या नात सानिमा पऱ्याका षताहार स्वास्नी पाचुकी गऱ्यां झगरा आयो भन्या आफना मानिस साथलाई इटाचपली डिठ्ठा अर्जवेगी छेउ पुऱ्याइदीनु -------------------------

## नौवाँ सवाल

॥ अरु कचहरीमा हाम्रो झगरा सुनी छिनि दियेन धेरै भयो पुर्पछे पाञ्युन हामी गल्युं भनी कराउन आया भन्या उस्को झगरिया ल्याई पुर्पछ गरी जस्तो निसाप पारी चाँडै छिनी दिनु --

## दसमा सवाल

॥ सवाल बमोजिमको काज् काम गर्दा १ पट्टी चप्रसीलाई रुजु राषी अह्राउनु षटाउनु तेरामार्फत भयाको मोहरका दस्तूर वा जे आम्दानी षसोषास दर्वार दाषील गरओ रसीद लीनु ------------------------------

## यगारौं सवाल

॥ येस काजमा चाहिन्या मानिस विचारी २ वहिदार २ तहविल्दार २ टहलुवा जना १ ज्मा जवान ७ के षांगी वर्ष १ को रूपैया १३२४ ताहीका आमदानीमा ली तप्सील बमोजिम षानु विचारी जना २ के ७०० वहीदार जना २ के रूपैया २८८ तहवील्दार जना २ के ३०० टहलुवा जना १ के रूपैया ३६ --------------

खान्गि वाहेक आफुले गऱ्याको कामको आम्दानीका दसौंध र मामूली जडावर दस्तूर वा श्री कुमारीचोकको सर्दार विचारी नौसिंदा तहविल्दार टहलुवाका सरह बमोजिम तिमिहरूले पनि ताहिका आम्दानीमा लिनु मोजरा पर्ला -------------------------------------------------

इति संवत् १८८३ साल मिति फागुन सुदी ७ रोज ५ शुभम् ------

साभारः कानून सम्बन्धी केही ऐतिहासिक अभिलेखहरु

कानून सहप्रकाशन, कानून व्यवसायी क्लब, काठमाडौं

प्रथम संस्करण, २०६३